

vissmaya.com

# भानुभक्तीय श्रीरामगीता

(भानुभक्त रामायणको उत्तर काण्ड, श्लोक संख्या १२० देखि १४९ सम्म)

लीला मेरि भनी सुनी कन तरुन् ई लोक् संसार् भनी ।
लोकैका हितका निमित्त भगवान् मानिस् स्वरुप्का बनी ॥
लीला गर्नु भयो र वृद्धहरुले जो गर्दथ्या सो गरी ।
सत्कामै गरि दिन् बिताउनु भयो बाधा सबैका हरी ॥१॥

साथ्मा लक्ष्मणजी थिया प्रभुजि थ्यैं कुन् हो ठुलो विष् भनी ।
सोध्या लक्ष्मणले र सब् कहनु भो विस्तार् प्रभूले पनी ॥
ब्रह्मस्वै विष हो भनी नृगजिको विस्तार् सुन्याथ्या जसै ।
बूझ्यो चित्त र फेरि लक्ष्मणजिले क्यै सोध्न लाग्या तसै ॥२॥

हे नाथ् ज्ञान स्वरुप देहहरुका आत्मा अधिन् भै पनी ।
भूभार् हर्नु भयो अनेक् तरहका यस् आकृतीका बनी ॥
लीला हो इ त आत्मरुपि भगवान् भक्तै फगत् जान्दछन् ।
यो लीला त दयानिमित्त हुन गो यस्तो पनि मान्दछन् ॥३॥

यस्ता मालिक जानि पाउ तलमा ख्वामित् पर्याको म छू ।
संसार् रूपि गभिर् समुद्र सहजै कुन् पाठले तर्दछू ॥
सोही युक्ति बताइ बक्सनु हवस् जुन् पाठले यो तरी ।
पुग्न्याछू पछि धाममा सहजमा आनन्दको भोग् गरी ॥४॥

लक्ष्मण्का इ वचन् सुनेर रघुनाथ् मूखै हँसीलो गरी ।
आफ्ना भक्त ति भाइ लक्ष्मणजिका सम्पूर्ण सन्ताप् हरी ॥
तत्त्व ज्ञान पनी तहीं दिनु भयो जुन्लाइ वेद्ले पनी ।
भन्छन् लोक्हरुलाइ तर्न सजिलो साँघू छ येही भनी ॥५॥

ई वर्णाश्रमका क्रिया जति त छन् तिन्लाइ पैल्हे गरी ।
दस् इन्द्रीय र मन् जितेर गुरुका साम्ने अगाडी परी ॥
आत्मज्ञान मिलोस् भनेर गुरुको सेवा निरन्तर् गर्याभ
आत्मज्ञान् पनि मिल्छ येहि रितले संसार् कतीले तर्याना६॥

फल् इच्छा गरि कर्म गर्छ यदि ता फेर् देह यस्तै लिई ।
त्यो फल् भोग् पनि गर्छ गर्छ अरू फेर् कर्मै बहुत् मन् दिई ॥
तेस्को फेर् पनि बन्छ देह करले येसै जगत्मा परी ।
यस्तै रित् सित घुम्छ त्यो भुवनमा अत्यन्त चक्रै सरी ॥७॥

अज्ञानै छ घुमाउन्या सकलको शत्रू सरीको यहाँ ।
ज्ञानैले गरि नष्ट हुन्छ पनि सो लीनू यही मन् महाँ ॥
अज्ञान्को र इ कर्मको छ कति फेर् तस्मात् क्रियाले गरी ।
अज्ञान् नष्ट हुँदैन छैन अरू थोक् ऊपाय यै ज्ञान् सरी ॥८॥

अज्ञान् नष्ट हवस् न राग् न त छुटोस् अज्ञानका कर्मले ।
कर्मै गर्छ त घुम्छ यै जगतमा त्यै कर्मका धर्मले ॥
तस्मात् ज्ञान विचार गर्नु जनले ज्ञान्ले कती पार् भया।
ज्ञान् छाडी कन कर्मले जनहरू संसार पार् को गया ॥९॥

विद्यालाइ सहाय कर्म छ ठुलो भन्छन् इ वेद्ले पनी ।
तस्मात् कर्म अवश्य गर्नु जनले साहाय होला भनी ॥

क्वै येसो पनि भन्दछन् त ति भनुन् साहाय कोही रती ।
विद्यालाइ त चाहिंदैन बुझ यो विस्तार् बताऊँ कती ॥१०॥

हुन्छन् कर्म त देह देहहरूमा पूरा अभीमान् भई ।
विद्या हुन्छ त जो छ तेहि अभिमान् देहादिमाको गई ॥
विद्याको र इ कर्मको त छ विरोध् साहाय हुन्थ्यो कहाँ ।
विद्यै एक् छ समर्थ मुक्ति दिनमा यै जान्नु सब्ले यहाँ ॥११॥

बाजीका श्रुति तैत्तिरीय कहिन्या श्रूतीहरूले पनी ।
भन्छन् येहि कुरा सहाय अरूको खोज्दैन विद्या भनी ॥
तस्मात् कर्म विरोधी जानि जनले सब् कर्म छाडी दिनू ।
विद्यै मात्र ठुलो बुझेर यसमा यो मन् लगाई लिनू ॥१२॥

जो यो तत्त्वमसी छ वाक्य यसको वाक्यार्थ जानी लिनू ।
यस्मा तिन् पद छन् ति तीन पदका तात्पर्यमा मन् दिनू ॥
तत्का अर्थ परात्म हुन् ति पदमा त्वं भन्नु जीवात्म हो ।
इन्को ऐक्य बुझाउन्या असि छ पद् रात् दिन् विचार् गर्नु यो ॥१३॥

मायाले त बन्यो शरीर सब यो आखिर् छ मर्न्या पनी ।
देख्नू पञ्च महाभुतै छ सबमा यस्ता प्रकार्को बनी ॥
संसार्को सुख दुःख साधन स्वरूप् देखिन्छ जो देह यो ।
स्थूलोपाधि भनी कहिन्छ सबले यो नाम् यसैको त हो ॥१४॥

दस् इन्द्रीय र मन् अपञ्चिकृत भुत् यो सोह्र जम्मा छ जो ।
स्थूलोपाधि भनी कहिन्छ सबको मुल् भोग साधन् छ यो ॥
येसै स्थूल उपाधि भित्र छ सदा इन्को वियोग् भो जसै ।
स्थूलोपाधि गलेर जान्छ सबको टिक्तैन एक् क्षण् कसै ॥१५॥

जीव् ता मुक्त छ शुद्ध निर्मल फटिक् जस्तो उपाधी गरी ।
सो निर्मल् पनि हुन्छ सङ्गगुणले उस्तै उपाधी सरी ॥
ईनै दूइ उपाधि देखि बुझि खुप् होला फरक् जिव् जसै ।
तस्सै मुक्त हुन्या छ छैन नहिं ता आर्को उपायै कसै ॥१६॥

रात‍ाका सँगमा रह्या स्फटिक ठिक् देखिन्छ रातै सरी ।
तस्तै आत्म पनी उपाधि सँग भै हुन्छन् उपाधी सरी ॥
आत्मामा छ उपाधि केहि न फटिक्मा क्यै छ रातो कतै ।
झुट्टै मात्र छ यो झलक् यहि विचार् खुप् राख्नु जत्ता ततै ॥१७॥

जाग्रत् स्वप्न सुषुप्ति वृत्ति तिन छन् यस् बुद्धिका ई पनी ।
झूट्टै देखि लिइन्छ नित्य सुखरुप् यस् ब्रह्मरुप्मा भनी ॥
जानी वृत्तिनिरोध् गरेर जनले यो आत्म जानी लिनू ।
आत्मा भीत्र उपाधिलाइ त झुटा जानेर छाडी दिनू ॥१८॥

आत्मा हो सुख रुप दुःख रुपको संसार् छ उस्मा कहाँ ।
अज्ञान्ले गरि मात्र सत्य रुपले झल्कन्छ आत्मा महाँ ॥
ज्ञान्ले लिन् पनि हुन्छ डोरि कन साँप् बुझ्नू छ जस्तो फगत् ।
तस्तै ईश्वरमा अनेक् तरहको देखिन्छ यस्तो जगत् ॥१९॥

अध्यास् हुन्छ चिदात्ममा इ सबको जो छन् अहङ्कारका ।
इच्छादी पनि बुद्धि धर्म बुझनू छैनन् कुनै सारका ॥

आत्मा साक्षि छ यो पृथक् इ सबमा सब्मा घुस्याको पनी ।
जस्तै घुस्तछ अग्नि लोहहरुमा तस्तै प्रकार्को बनी ॥२०॥

यै आत्मा कन चिह्न पर्छ गुरुका वेद्का वचन्ले गरी ।
आत्मालाइ चिह्न्यो भन्या बुझि लिनू त्यो मुक्त भो तेस् घरी ॥
तस्मात् आत्मविचार गर्नु जनले यस् रुपका हुन् भनी ।
अज्ञान् नष्ट गराउना कन अवर् छैनन् उपाई पनी ॥२१॥

आत्मा यस् रितले चिह्निन्छ पहिले एकान्तमा गै बसोस् ।
दस् इन्द्रीय जितेर मन् पनि जिती आत्मैविचार्मा परोस् ॥
जानोस् जो छ जगत् प्रकाश् सकल यो हो आत्मसत्ता भनी ।
येही तत्त्व बुझी त पूर्ण रुपको होइन्छ आफू पनी ॥२२॥

ओङ्कार् वाचक हो सबै जगतको अज्ञान् अवस्था महाँ ।
ज्ञानोत्तर् हुन सक्छ वाचक कहाँ लिन् हुन्छ आत्मै महाँ ॥
आत्मामा जब लिन् भया अ उ म तिन् विश्वादि साक्षीसहित् ।
आत्मै मात्र रहन्छ तेस् बखतमा निर्मल् उपाधीरहित् ॥२३॥

सोही आत्म म हूँ भनी दृढ भयो ज्ञान्का विचार्ले जसै ।
जीवन्मुक्त भनी कहिन्छ जन त्यो पर्दैन ताप्मा कसै ॥
सब् इन्द्रीयशमन् गरेर बलवान् कामादिको नाश् गरी ।
अभ्यास् गर्नु समाधिमा त सहजै देखिन्छु साम्ने हरी ॥२४॥

येही पूर्ण अनन्त आत्मरूपको ध्यान् नित्य गर्दै रहोस् ।
जो प्रारब्ध छ सो बुझेर बलियो ई दुःख सुख् सब् सहोस् ॥
येही रित् सित दिन् बिताउँछ भन्या यो देह छुट्ला जसै ।
संसार्का सब दुःख छाडि कन त्यो लिन् हुन्छ मैमा तसै ॥२५॥

आदीमा न त अन्त्यमा न बिचमा यो देहधारी बनी ।
पूर्णानिन्द हुँदैन जान्नु सबले यो सत्य बात् हो भनी ॥
तस्मात् यो विधि छोडि गर्नु जनले आत्मैविचार् खुप् गरी ।
त्यो मैमा मिलि जान्छ जल् जलधिमा पौंचेर मील्या सरी ॥२६॥

आत्मै मात्र छ सत्य यो सब जगत् झूटै छ झूटो पनी ।
डोरी सर्प बुझ्या सरी बिबुझमा देखिन्छ साँचो भनी ॥
जान्नू जानिइयेन यो भनि भन्या मेरा चरण्मा परी ।
सेवा गर्नु र जान्दछन् नतर ता टर्दैन कस्तै गरी ॥२७॥

वेद्को सार रहस्य यो सब कह्याँ जो यो विचार् गर्दछन् ।
कोटी जन्म सहस्रका सकल पाप् तिन्का सहज् टर्दछन् ॥
तस्मात् भाइ विचार यो सब जगत् झूटो चटक् झैं भनी ।
मैमा भक्ति सदा लगायर रहू आनन्द रूपी बनी ॥२८॥

मेरो येहि सगुण् स्वरूप् कन खुसी मानी भजन् वा गरून् ।
वा निर्गुण् परिपूर्ण आत्म रुपमा लैगेर यो मन् धरून् ॥
ती दूवै मइ तुल्य हुन् ति मइ हुन् ती मै सरीका बनी ।
गर्छन् सब् भुवनै पवित्र तिनले कुल्ची दिंदामा पनी ॥२९॥

श्रद्धा भक्ति रहोस् गुरुचरणमा मेरा वचन्मा पनी ।
यस्लाई श्रुतिसार् बुझी कन पढोस् मुल् तत्त्व यै हो भनी ॥

यस्ता रित् सित यो पढ्यो पनि भन्या अज्ञानको नाश् गरी ।
मेरै रुप् बनि जान्छ जान्छ सहजै संसारसागर् तरी ॥३०॥

